# महर्षि मनुलाई अपशब्द बोल्नु, मनुस्मृतिलाई गाली गर्नु र जलाउनु केवल हाम्रै अज्ञानताको परिचय हो..!




ओ३म्..

मनुस्मृति एक त्यस्तो ग्रंथ हो जो पहिले त स्वार्थी र मतान्ध मानिसहरुको मिलावटको शिकार भयो र पछी हाम्रो तथाकथित् राजनीतिको..! नेपालमा यो हावा कहाँ बाट चल्यो भन्ने कुरो बुझ्न सर्वप्रथम थोरै भए पनि भारतको सामाजिक तथा राजनैतिक आन्दोलनको बारेमा केहि जान्नु आवश्यक छ किनकि भारतको हरेक आन्दोलनको प्रभाव नेपालमा पनि पर्ने गरेको छ -

गत शताब्दीको तेस्रो दशक थियो- सन् १९२७ को वर्ष।भारतमा दलित आन्दोलनका जनक मानिने भीमराव रामजी अम्बेडकर जसलाई "बाबा साहेब अम्बेडकर" को नाउले पनि चिन्छ। उनले केहि मानिसहरु संग मिलेर मनुस्मृतिको तत्कालीन प्रति जलाएका थिए। संयोगवस त्यसै वर्ष मोहनदास करमचन्द गान्धीले दक्षिणी भारतका केहि गाउँ र नगरमा ब्राह्मण, अब्राह्मण र वर्ण तथा धर्म जस्ता विषयमा चर्चा गर्दै थिए।१६ सेप्टेम्बर, १९२७ का दिन तमिलनाडुको तंजौरमा उनको पूरा भाषण नै यहि बिषयमा केन्द्रित थियो। यी विषयहरुमा उनीसंग भएका तिता-मिठा, तिखा-तेर्छा

प्रश्न-उत्तरहरु महादेव देसाई द्वारा गरिएको समेकन योंग इंडियाको २४ नोभेम्बर, १९२७को अंकमा छापिएका थिए। ति प्रश्नहरु मध्ये प्रमुख दुई प्रश्न सीधा मनुस्मृति संग सम्बन्धित यस्ता थिएः
प्रश्नः मनुस्मृतिमा वर्ण र धर्मको जुन सिद्धान्त दिइएको छ, के तपाईंले त्यसको समर्थन गर्नुहुन्छ?
गान्धीः सिद्धांत त त्यसमा छ, तर त्यसको व्यावहारिक रूपको बारेमा म पूर्ण रुपमा सहमत छैन।यस ग्रंथका कैयौं अंश छन् जसको बारेमा गंभीर आपत्ति हुन सक्छ। मलाइ लाग्छ ति अंश त्यसमा पछी जोडिएका हुन्।
प्रश्नः के मनुस्मृतिमा निक्कै अन्यायपूर्ण कुराहरु भनिएको छ?
गान्धीः अँ, त्यसमा स्त्री र तथाकथित निम्न जातिका बारेमा अनेकौं अन्यायपूर्ण कुराहरु छन्।त्यसैले तथाकथित शास्त्रहरुलाई निक्कै सावधानीका साथ पढ्नु पर्ने आवश्यकता छ।

*भारतमा वामपंथ, दक्षिणपंथ र अन्य नामधारी पंथ-सुपंथ संग संबद्ध राजनीतिक इतिहासकारहरुको बौद्धिक लापरवाही, शोधकार्यमा आलस्यता, निम्नस्तरीय भाषा-ज्ञान, संदिग्ध सत्यनिष्ठा, वैचारिक पूर्वाग्रह र दुराग्रहको एक जिउँदो उदाहरण मनुस्मृति पनि हो।*

गान्धीका उपरोक्त दुवै उत्तर बाट दुई कुरा स्पष्ट हुन्थ्यो, एक त यो कि यस ग्रंथका आपत्तिजनक अंशहरु यसमा पछी बाट जोडिएको हुन सक्थ्यो र दोस्रो यो कि उनले मनुस्मृतिको नामले प्रचलित संस्करणलाई “तथाकथित शास्त्र” हरुको श्रेणीमा नै राखेका थिए।वर्ण-धर्मको एक वैज्ञानिक व्याख्या गर्दै यो पूरै बहसमा गान्धीले आफ्ना पक्ष भगवद्-गीताको आधारमा राखेका थिए, जसमा जन्मको सट्टा गुण, कर्म र स्वभावलाई मनुष्यको वर्णको आधार भनिएको थियो र जसमा समानता र स्वतंत्रताको कुनै पनि सिद्धांतको अवज्ञा हुँदैनथ्यो।

एउटा अन्य अवसरमा मनुस्मृतिको बारेमा आफ्नो स्थिति अधिक स्पष्ट पार्दै गान्धीले भनेका थिए- “मैले मनुस्मृतिलाई शास्त्रहरुको भाग अवश्य मान्छु, तर यसको मतलब यो हैन कि मैले मनुस्मृतिको नामले प्रचलित कुनै पुस्तकमा छापिएका प्रत्येक श्लोकलाई अक्षरशः सत्य मानुँ।छापिएका पुस्तकमा यति धेरै विरोधाभास भरिएका छन् कि यदि तपाइँ कुनै एक हिस्सालाई स्वीकार गर्नुहुन्छ भने ति अन्य हिस्सालाई अस्वीकार गर्नु पर्ने हुन्छ जुन त्यस संग नितान्त मेल खाँदैनन्।वास्तवमा आज कसैसंग कुनै पनि ग्रन्थको मूल प्रति छँदै छैन।”

मनुस्मृति मात्र नभएर बाइबल, रामायण, महाभारतमा समेत भएका मिलावट संग गान्धी राम्रो संग परिचित थिए। उनको आश्रममा कसैले उनीसंग गरेको एक प्रश्न- “के स्वयं येशुले मानिसहरुलाई उपदेश दिएको थिएन?” मा उनको उत्तर यसप्रकार थियो-

"यहाँ खुबै सावधानी अपनाउनु पर्दछ। तपाइँ चाहनु हुन्छ कि मैले येशुको जीवनको बारेमा आफ्नो धारणा तपाइँलाई भनुँ। यसमा म यत्ति मात्र भन्न चाहन्छु कि बाइबलमा लेखिएका हरेक शब्दलाई मैले ऐतिहासिक सत्य मान्दैन.... । मैले गिरि-शिखरमा दिइएको येशुको उपदेश र पौलको पत्रमा निक्कै अंतर मान्दछु।पौलको पत्र त येशुको शिक्षामा पछी मिलाइएको हो। ति पौलका कृति हुन्, येशुका हैनन्" -(योंग इंडिया, १९ जनवरी, १९२८)

*मनुस्मृतिको नामले प्रचलित यसको वर्तमान प्रतिहरु भारुचि, मेधातिथि, गोविंदराज एवं कूल्लूक भट्ट इत्यादि द्वारा अलग-अलग समयमा (सातौं देखि तेह्रौं सताब्दीका बीच) गरिएका संकलन र भाष्यमा आधारित छन्।*

ठीक त्यसैगरी योगिराज श्रीकृष्णको चरित्रको बारेमा पनि विभिन्न परस्पर-विरोधी कुराहरुमा आफ्नो स्थिति स्पष्ट गर्दै गान्धीले भनेका थिए-

"मलाइ ज्ञात छैन कि महाभारतका कृष्ण कहिले जीवित थिए या थिएनन्। मेरो कृष्णको कुनै ऐतिहासिक व्यक्ति संग कुनै संबंध छैन। मैले आफ्नो सिर यस्तो कृष्णको अगाडी झुकाउँदिन जो अहंकारमा चोट लाग्नाले मात्र कसैको वध गर्दछ... । मेरा समक्ष यदि यो सिद्ध गरियोस कि महाभारत पनि त्यहि अर्थमा इतिहास हो जुन अर्थमा आधुनिक ऐतिहासिक पुस्तकहरु छन्।तब महाभारतका प्रत्येक शब्द सही छन् र महाभारतका कृष्णले पनि त्यसमा बताइएका केहि कृत्य साँच्चिकै गरेका थिए भने त म हिन्दू समाजबाट बहिष्कृत हुने खतरा मोलेर पनि निसंकोच उस कृष्णलाई अवतार मान्न इंकार गरिदिन्छु.... । महाभारतको जुन प्रति आज हामीलाई उपलब्ध छ, त्यसलाई म मूलको दोषरहित प्रतिलिपि पनि मान्दैन...। यसको विपरीत म सम्झन्छु कि त्यसमा समय-समयमा अनेकौं परिवर्तनहरु भएका छन्...।" (योंग इंडिया, १ अक्टूबर, १९२५)

**मनुस्मृतिमा मिलावटबाजी या इंटरपोलेशनः**

हाम्रो समाजमा वामपंथ, दक्षिणपंथ र अन्य नामधारी पंथ-सुपंथ संग संबद्ध राजनीतिक इतिहासकारहरुको बौद्धिक लापरवाही, शोधकार्यमा आलस्यता, निम्नस्तरीय भाषा-ज्ञान, संदिग्ध सत्यनिष्ठा, वैचारिक पूर्वाग्रह र दुराग्रहको एक जिउँदो उदाहरण मनुस्मृति हो। गान्धी र अम्बेडकर दुवैले अनेकौं अवसरमा यसलाई स्वीकार गरेका थिए कि मनुस्मृतिको नामले प्रचलित वर्तमान पुस्तक वास्तवमा मनुका अतिरिक्त मुख्य रूपले कुनै भृगुका विचारहरुले भरिएका पोथ्रा थिए, जसमा पछी पनि कैयौं मानिसहरुले थप-घट गरे । स्वयं भृगुका बारेमा अनेक किसिमका परस्पर-विरोधी प्रसंग र

पौराणिक आख्यान पाइन्छन्, जसमा शिवलाई लिंगपूजित हुने श्राप दिने देखि लिएर विष्णुलाई लात्तीले हिर्काउने र फेरी उनीसंग आफ्नी छोरी विवाह गरेको सम्मका कहानिहरु भरिएका छन्।

*एउटा घोर धार्मिक तथा आध्यात्मिक समाजमा यस्ता दुराचारहरुलाई स्वीकार्यता दिलाउनु त्यति सजिलो थिएन। त्यसैले एक अनौठो मार्ग खोजेर निकालियो। यदि आफ्ना कुनै कुकृत्यलाई पनि उचित ठहऱ्याउने हो भने त्यसलाई कुनै प्रामाणिक ग्रंथको दृष्टान्त दिएर भनिदिनु।*

अज्ञानी र अन्धविश्वासीहरुले चाहे यस्ता मिथ्या कहानिहरुको ऐतिहासीकरण गरिरहुन तर पनि यी कहानिहरुमा केहि न केहि लोकप्रिय तथा गूढ अर्थ लुकेका हुन्छन्। जस्तो ऋषि भृगुको बारेमा अनेकौं कहानीहरु बनाएर त्यसको खुबै उपयोग गरिएको छ तर संत साहित्यमा यस्ता घुलमिल सहज नै पाइन्छन्। चाहे जे भए पनि ऋषि भृगु महर्षि मनुका शिष्य हुनु र मनुस्मृतिका प्राचीन संकलनकर्ता हुनुमा व्यापक सहमति पाइन्छ। मनुस्मृति संहिता भन्दा अलग भृगुलाई ज्योतिषमा आधारित कुनै "भृगुसंहिता" को रचनाकार पनि मानिन्छ।

मनुस्मृतिको नामले प्रचलित यसका वर्तमान प्रतिहरु भारुचि, मेधातिथि, गोविंदराज एवं कूल्लूक भट्ट इत्यादि द्वारा अलग-अलग समयमा (सातौं देखि तेह्रौं सताब्दीका बीच) गरिएका संकलन र भाष्यमा आधारित छन्। हाम्रो वर्तमान स्वरूपमा मनुस्मृति जुन कलकत्ता पांडुलिपिमा आधारित छ, त्यो वास्तवमा १२औं सताब्दीमा बंगालमा जन्मेका कुल्लूक भट्ट द्वारा रचित "मन्वर्थमुक्तावली" नामक भाष्यमा आधारित छ।

आर्यावर्त शुरू देखि नै बौद्धिक तथा अध्यात्मिक संघर्ष र समन्वयको स्थली रहेको छ। श्रमण र ब्राह्मण देखि शैव, वैष्णव, बौद्ध, जैन र संतमत सम्मले वैदिक ग्रंथहरुको आ-आफ्नै तरीकाले व्याख्या गर्ने बौद्धिक तथा साधनापरक प्रयास गरेको देखिन्छ। तर समयका साथ-साथ ब्राह्मण-धर्म, जन्मना बाहुन/बाउनहरुको संकीर्ण-पुरोहितवादको शिकार भयो।

*मनुस्मृति मिलावटबाजीको सर्वाधिक शिकार यसकारणले बन्यो कि एक आदर्श समाज र राज्यको स्थापनाको लागि यो एकमात्र बहुमान्य मार्गदर्शक थियो।*

दुष्प्रवृत्तिका शिकार शैवहरुले यस्ता-यस्ता वामाचारलाई अपनाए र प्रचारित गरे जसमा पंचमकार अर्थात् मदिरा, मांस, मीन, मुद्रा र मैथुनको खुलमखुला छुट थियो। शक्ति-पूजाको नाममा प्रकट भएका साक्तहरुले पनि यहि दुराचारलाई अपनाए। यहाँ सम्म कि ब्रह्मचर्य साधनाको अनिवार्य

शर्त अपनाउने बौद्ध साधकहरु पनि पथभ्रष्ट भए र खुलेर यिनै पाँच वस्तुको भोगमा लिप्त भए। अभक्ष्याभक्ष र अगम्यागमनको हदै सम्म सबको पतन भयो।

एउटा घोर धार्मिक तथा आध्यात्मिक समाजमा यस्ता दुराचारहरुलाई स्वीकार्यता दिलाउनु त्यति सजिलो थिएन। त्यसैले एक अनौठो मार्ग खोजेर निकालियो। यदि आफ्ना कुनै कुकृत्यलाई पनि उचित ठहऱ्याउने हो भने त्यसलाई कुनै प्रामाणिक ग्रंथको दृष्टान्त दिएर भनिदिने। आफ्नो विकृत विचार र आचरणलाई शास्त्रसम्मत सिद्ध गर्नका लागि समाजका आदरणीय तथा सर्वमान्य ग्रंथहरुका पाण्डुलिपिहरुमा आफ्ना कुविचार घुसाएर तिनलाई विकृत गरिदिने। त्यति बेला छपाईको व्यवस्था थिएन र कुनै पनि ग्रंथको प्रामाणिक प्रति उपलब्ध पनि हुँदैनथ्यो। त्यसैले समय, स्थान र आवश्यकताका हिसाबले पथभ्रष्ट बाहुन, शैव, साक्त, बौद्ध, जैन एवं अन्य नास्तिक परंपराका मानिसहरुले पनि शास्त्रहरुका पाण्डुलिपिहरुलाई दूषित गर्ने शृङ्खला शुरू गरे।

मनुस्मृति यसको सर्वाधिक शिकार यसकारणले बन्यो कि एक आदर्श समाज र राज्यको स्थापनाका लागि यो एकमात्र बहुमान्य मार्गदर्शक थियो। तर लापरवाहीमा यस्तो गर्नेहरुले यसको ध्यान नै राखेनन् कि एकै ग्रंथमा अत्यधिक परस्पर विरोधी, मिथ्या तथा असंगत तथ्यहरु र श्लोकहरुलाई जहाँ-तहाँ जोड्दै गए।

मनुस्मृतिमा त हाँस्यास्पद श्लोकहरुको हदै सम्म मिश्रण गरिएको छ। पहिलो श्लोकमा जुन विधान छ, त्यसको ठीक अर्को श्लोकमा उसैको विरोध छ। विषय विरुद्ध, प्रसंग विरुद्ध, परस्परविरुद्ध र अनावश्यक पुनरुक्तिहरुको त भरमार नै छ। एक औसत स्तरको लेखकको रचनामा पनि यस्ता त्रुटिहरु हुँदैनन्। त्यसैले मनुस्मृतिको शुद्धिकरणमा आजीवन कार्य गर्ने शोधकर्ताहरुले यस्ता मिलावटबाजि या **इंटरपोलेशन**लाई “दुस्साहस” को संज्ञा दिएका छन्।

*आफ्नो पूर्वाग्रहयुक्त अनुमानलाई सत्य साबित गर्नेहरुका लागि मनुस्मृतिको विकृत रूपले बलियो आधार सजिलै उपलब्ध गराउँदथ्यो।*

मिलावट सदा “विरोधी विचार” या नराम्रा विचारहरुको मात्र गरिएको थिएन। कैयौं पटक यो मूल ग्रंथकारको विचार संग मेल खाने राम्रा विचारहरुको पनि हुन सक्थ्यो। तर मिलावट न ठहऱ्यो। मूल लेखकको भाषा, शैली र विषय-वस्तु भन्दा एकदम भिन्न हुनाले त्यो सजिलै संग चिन्न सकिन्छ। दुर्भाग्यवस् समालोचनात्मक दृष्टि र आत्मविश्वासको अभावले ग्रसित कैयौं पिढीका सिधा-साधा शिष्यहरुले रटन्ते परम्पराको आधारमा यी दूषित ग्रंथहरुलाई नै कैयौं पिढी सम्म अगाडी पनि बढाए। यी असंगत, विरोधाभासी, धर्म विरुद्ध कुरालाई गडबड तरीकाले पाण्डुलिपिहरुमा जतातत्तै

घुसाउनुलाई नै साहित्यको भाषामा क्षेपक या प्रक्षेप भनियो। अंग्रेजीमा यसलाई इंटरपोलेशन, इन्सर्सन, रिवर्स प्लेजरिजम र स्यूडेपाइग्राफा इत्यादि भनियो। आज जब छपाई र सूचना क्रान्तिको युगमा पनि प्रक्षेप (प्लेजरिजम) एक ठूलो समस्या छ भने प्राचीन र मध्ययुगीन राजनीतिक संघर्षको कालखण्डमा यस्तो मिलावटलाई सहजै सम्झन सकिन्छ।

हाम्रा राजनीतिक इतिहासकारहरुले जानीनजानी यस पूरा परिघटनालाई नदेखे झैं गरे र यस तथ्यलाई गौण रुपमा राखे कि मनुस्मृतिको कुनै वास्तविक या प्रामाणिक प्रति उपलब्ध नै छैन। सामाजिक स्तरमा प्रतिक्रियावाद फैलाउने र आफ्ना पूर्वाग्रहयुक्त अनुमानलाई सत्य साबित गर्नेहरुलाई मनुस्मृतिको यो विकृत रूपले बलियो आधार सजिलै उपलब्ध गराउँदथ्यो। अर्को तिर धर्मको मार्गबाट च्युत भइसकेका पाखण्डी पण्डित तथा मूर्ख पुरोहितहरुले पनि आ-आफ्नो स्वार्थ-सिद्धिका लागि गंभीरताले यो ग्रंथलाई गम्भीरता पूर्वक अध्ययन गर्ने, सम्झने र दूषणमुक्त गर्ने कुनै प्रयास गरेनन्। मनुस्मृतिको बारेमा हुने बौद्धिक चर्चा, विश्वविद्यालयहरुमा पढाइने कक्षाहरु र शैक्षिक विश्लेषण सम्ममा कहिले अनजानमै त कहिले जानीबुझी मनुस्मृतिको दोषपूर्ण प्रतिलाई नै असली मनुस्मृति मानियो।

यूनानी नाटककार एशीलसले साँच्चै भनेको थियो कि "युद्धको सबभन्दा पहिलो शिकार सत्य नै बन्दछ" यो कुरो अन्ध-दुराग्रह बोकेको वैचारिक युद्धमा पनि लागू हुन्छ। यिनको पनि सबभन्दा पहिलो शिकार सत्य नै बन्दछ अर्थात, धर्म नै बन्दछ। यसको शिकार बन्नु पर्दछ मानवीय उदारता, विनम्रता, व्यापकता र वैज्ञानिकतालाई।

*यो कुरो कसैले भन्दैन कि जन्मका आधारमा जाति र वर्णको व्यवस्थामा सबभन्दा पहिलो चोट मनुस्मृतिमा नै गरिएको छ..... ।*

- यो कुरो कसैले भन्दैन कि जन्मका आधारमा जाति र वर्णको व्यवस्थामा सबभन्दा पहिलो चोट मनुस्मृतिमा नै गरिएको छ- (मनु. १२/१०९, ११४, ९/३३५, १०/६५, २/२८,१०३, १४८, १५५-१५८, १६८)।
- सबका लागि शिक्षा र सबैसंग शिक्षा ग्रहण गर्ने कुरो पनि यसमा छ- (मनु.२/१९८-२१५)।
- स्त्रीको पूजा गर्ने अर्थात उनीहरुलाई अधिकाधिक सम्मान दिने, उनीहरुलाई कदापी शोक नदिने, सदा प्रसन्न राख्ने र संपत्तिको विशेष अधिकार दिने जस्ता कुरा पनि छन्-(मनु. ३/५६-६२, ९/१९२-२००)।
- राजासंग भनिएको छ कि उसले प्रजा संग जबरदस्ती केहि नगराओस-(मनु.८/१६८)।

- यो पनि भनिएको छ कि प्रजालाई सदा निर्भयता महसूस हुनु पर्दछ-(मनु. ८/३०३)।
- सबैप्रति अहिंसाको कुरो गरिएको छ- (मनु. ४/१६४)।

व्यक्तिगत चित्तशुद्धि देखि पूरा समाज व्यवस्था सम्म यसमा कैयौं यस्ता सुंदर कुराहरु छन्, जुन आज पनि हाम्रो मार्गदर्शक बनेका छन्।

लाखौं वर्षको चिन्तनमा जहाँ केहि अनुपम विचार र व्यवहारहरु हुन्छन् भने त्यहाँ केहि विसंगतिहरु पनि हुनसक्छन्। स्थान, काल, परिस्थिति र व्यक्तिगत वृत्तिका हिसाबले खराब विचारहरु पनि निश्चित रुपले समावेश भएको होला। तर भावी पिढीहरुको काम यो हो कि तिनले जो राम्रो छ, त्यसलाई मात्र ग्रहण गर्ने, बाँकीलाई पूर्ण सतर्कता र विनम्रताका साथ एक किनारा गरिदिने उदारतापूर्वक ठूलो रेखा खिचुन।

मनुस्मृतिमा आधुनिक समयमा यस्तो पहिलो प्रयास भारतीय विद्वान आचार्य विनायक नरहरी (विनोवा) भावेले गरेका थिए। सन् १९६५मा "मनु-शासनम्" को नामले उनले संस्कृतमा यसका केहि प्रासंगिक र उपयोगी श्लोक चुनेर तिनको भाष्य गरे। वर्तमान कुल २६८५ श्लोकहरु मध्ये उनले केवल ४४५ श्लोकहरुलाई मात्र चुने। पछी अर्को संस्करणमा यसबाट पनि ४५ श्लोकहरु निकालिदिए। अर्थात् उनलाई मनुस्मृतिका केवल ४०० श्लोक मात्र सत्य लागे। विनोवाको यो संकलन र प्रवचनलाई अच्युत भाई देशपाण्डेले हिन्दीमा अनुवाद गरेका छन्। सन् १९८१मा आर्ष साहित्य प्रचार ट्रस्टले आचार्य राजवीर शास्त्री र प्रा. सुरेन्द्र कुमारको कैयौं वर्षको गहन शोधका आधारमा मनुस्मृतिका कूल २६८५ श्लोकहरु मध्ये केवल ११८३ श्लोकहरुलाई मात्र मौलिक मान्दै "विशुद्ध मनुस्मृति" को नामले यसको अर्को संस्करण पनि निकालिएको छ।

*... पैट्रिक ओलिवेलले सन् २००५मा अक्सफोर्ड विश्वविद्यालय प्रेसबाट छापिएको पुस्तक "मनूज़ कोड अफ ल, अ क्रिटिकल एडीशन एंड ट्रांसलेशन अफ द मानव-धर्मशास्त्र" मा पनि पाण्डुलिपिहरुको स्तरमा भएको घनघोर विसंगतिहरुलाई स्पष्ट रुपमा रेखांकित गरेका छन्।*

यूरोपीय र अमेरिकी विद्वानहरुको कुरो गर्नेहो भने सन् १७९४मा विलियम जोन्सले यसको पहिलो अनुवाद गरेका थिए र त्यस पछी दर्जनौं विद्वानहरुले समय-समयमा यसको आ-आफ्नो तरिकाले अनुवाद र विश्लेषण गरेका छन्। इंडियाना र टेक्सास विश्वविद्यालयहरु संग सम्बन्ध राख्ने एक प्रसिद्ध श्रीलंकन भाषाविद र संस्कृत साहित्यका विद्वान पैट्रिक ओलिवेलले सन् २००५मा अक्सफोर्ड विश्वविद्यालय प्रेसबाट छापिएको पुस्तक **"मनूज़ कोड अफ ल, अ क्रिटिकल एडीशन एंड**

**ट्रांसलेशन अफ द मानव-धर्मशास्त्र"** मा पनि पाण्डुलिपिहरुको स्तरमा भएको घनघोर विसंगतिहरुलाई स्पष्ट रुपमा रेखांकित गरेका छन्।

हामीलाई मनु प्रति अत्यन्त खेद छ, ठीकै हो, जायज पनि छ। हामीले भावावेशमा र सामाजिक-राजनीतिक संदेश दिनका लागि उनका नामले प्रचलित पुस्तकलाई एक पटक चन्दनको चितामा राखेर जलायौं पनि। जान दिम, यो पनि ठिक। तर के हामीले आफ्नो कुत्सित दुष्प्रचारको घिनलाग्दो तेल हाली-हाली जहिले पायो तहिले त्यसलाई जलाइरहौं? त्यस पुस्तक माथि जुत्ता राखेर भनौं कि हामी त नारीवादी हौं र सभ्य हौं। कसले रोकेको छ र, गलत तथा खराब कुराहरुलाई निकालेर बाहिर फाल्दिनुस न। चाहनु हुन्छ भने राम्रा कुराहरु पनि थपिदिनुस र तिनलाई आफ्नो जीवनमा पनि उतार्नुहोस। त्यसलाई अझैं उत्तम बनाइदिनुस। चाहे जेहोस्, आफ्ना धरोहरहरु र अतीतका गलतिहरु संग लड्नका लागि र समाधानका लागि हामी आपसमा सम्झौता, भलाकुसारी, सत्यशोधन र सत्याग्रहको सहारा लिन पनि सिकौं।

हामी वैज्ञानिक युगका पिढी हौं। यी पुस्तक जलाउने जस्ता मध्ययुगीन बर्बर तरिका हामीलाई शोभा दिन्न। अतीतमा पुस्तकालयहरुको नै दहनको काम नालंदा, अलेक्जेन्द्रिया र अल-हकम देखि कुस्तुनतुनिया सम्म केहि सड्के मगजका मानिसहरुले गरेका थिए। हामी यस्तो किन गरौं। दहन जो भयो भयो। अब हामी अलिकति रहन, सहन, शोधन, उन्नयन र प्रबोधन पनि सिकौं न त। अस्तु..

नमस्ते..!